## पुस्तकको बारेमा केहि शब्द:

**आर्योद्देश्यरत्नमाला** आर्य समाजका संस्थापक स्वामी दयानंद सरस्वती द्वारा संवत १९२५ (१८७३ ईसवीं)मा रचित (१९३४मा प्रकाशित) एक लघु पुस्तिकाहो।

यस पुस्तकमा क्रमवार १०० शब्दहरुको परिभाषा दिइएको छ । ईश्वर, धर्म, अधर्म देखि प्रारंभ गरेर वेद, उपवेद, वेदांग, उपांग आदिको परिभाषा यहाँ उपलब्ध छ।

धेरैजसो परिभाषाहरु यी शब्दहरुको लोक व्यवहारमा प्रयुक्त अर्थहरु भन्दा भिन्न छन्, अर्थात् शाब्दिक अर्थ र भावार्थको आधारमा परिभाषा र वर्णन गरिएको छ।

यो पुस्तक आर्य समाजको स्थापना भन्दा २ वर्ष पूर्व नै लेखीएको थियो। स्वामी दयानंदको मान्यता थियो कि कैयौं शब्दहरु र विचारहरुको सनातन वैदिक धर्ममा रूढ अर्थ दिइएको छ जो कि अनुचित छ। यसै लक्ष्य बाट यो पुस्तकमा यी परिभाहरु दिएको हो।

छापिएको पुस्तक केवल ८ पृष्ठको छ। भाषाको शैली संस्कृतनिष्ठ हिन्दी छ। उस समय हिन्दीमा काफि कम पुस्तकहरु प्रकाशित हुन्थे, स्वामी दयानंद हिंदीको प्रयोग प्रकाशनमा गर्नेहरु मध्य अग्रणि हुनुन्थ्यो र यो पुस्तक पनि त्यसैको एक उदाहरण हो।

++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++

***अनुवादको बारेमा: मैले सर्वाधिक मन पराउने पुस्तकहरु मध्ये 'सत्यार्थ प्रकाश' पछी यो (आर्योद्देश्यरत्नमाला) पुस्तक पनि एक हो । यसको बारेमा नेपाली जनमानसलाई पनि केहि जानकारी उपलब्ध गराउने उद्देश्यले यसको नेपालीमा अनुवाद गर्ने जमर्को गरें । केहि शब्दहरुको हिन्दी बाट नेपालीमा अनुवाद गर्दा अलि असुविधा परेको हुनाले जस्ताको तस्तै राखिएको छ र भाषा त्यति क्लिष्ट नहोस् भन्ने कुराको पनि ध्यान राखेको छु तर पनि कुनै भाषागत या शब्दार्थमा केहि त्रुटी अवश्य होलान्, विज्ञजन बाट सल्लाह र सुझावको अपेक्षा सहित.. ओ३म्..!***

-प्रेम आर्य

==========================================

*महर्षि दयानन्द सरस्वतीले जुन जुन पदार्थलाई जे जे मानुहुन्छ:

१. **ईश्वर:** – जसको गुण, कर्म स्वभाव र स्वरूप सत्य छ, जो केवल चेतनमात्र वस्तु हो, जो अद्वितीय, सर्वशक्तिमान्, निराकार, सर्वत्र व्यापक, अनादि र अनान्तादि सत्यगुणवाला छ, जसको स्वभाव अविनाशी, ज्ञानी, आनन्द, शुद्ध, न्यायकारी, दयालु र अजन्मादि छ, जसको कर्म जगत्को उत्पत्ति, पालन र विनाश गर्नु तथा सर्व जीवहरुको पाप पुण्यको फल ठीक ठीक दिनु हो, उसैलाई 'ईश्वर' भनिन्छ।

२.  **धर्म:** – जसको स्वरूप ईश्वरको आज्ञा यथावत् पालन र पक्षपातरहित न्याय तथा सर्वहित गर्नु हो, जो कि प्रत्यक्षादि प्रमाणहरुले सुपरीक्षित र वेदोक्त हुनुले सब मनुष्यहरुको लागि यही एक मान्न योग्य छ त्यसैलाई 'धर्म' भनिन्छ।
३. **अधर्म:** – जसको स्वरूप ईश्वरको आज्ञा छोडेर र पक्षपातसहित अन्यायी भएर विना परीक्षा गरि आफ्नो हित गर्नु हो, जो अविद्या हठ अभिमान क्रूरतादि दोषयुक्त हुनुको कारणले वेदविद्या देखि विरुद्ध छ, र सब मनुष्यहरुले छोड्न योग्य छ, त्यहि नै 'अधर्म' हो।
४.  **पुण्य:** – जसको स्वरूप विद्यादि शुभ गुणहरुको दान र सत्यभाषणादि सत्याचार गर्नु हो, त्यसलाई 'पुण्य' भनिन्छ।
५. **पाप:** – जो पुण्य भन्दा उल्टो र मिथ्याभाषणादि गर्नु हो, त्यसलाई 'पाप' भनिन्छ।
६. **सत्यभाषण:** –आफ्नो मनमा जे छ र असम्भवादि दोष रहित भएर सदा त्यस्तै बोल्नु नै 'सत्यभाषण' हो।
७. **मिथ्याभाषण:** – जो सत्यभाषण को विपरित अर्थात् सत्य बोल्नुको विरुद्ध छ, त्यो 'मिथ्याभाषण' हो।
८. **विश्वास:** – जसको मूल अर्थ र फल निश्चय नै सत्य होस्, त्यहि 'विश्वास' हो।
९. **अविश्वास:** – जो विश्वासको उल्टो छ, जसको तत्त्व अर्थ नहोस्, त्यो 'अविश्वास' हो।
१०. **परलोक:** – जसमा सत्यविद्या बाट परमेश्वरको प्राप्ति होस्, र उक्त प्राप्ति बाट यस जन्म वा पुनर्जन्म र मोक्षमा परमसुख प्राप्त होस्, त्यसलाई 'परलोक'भनिन्छ।
११. **अपरलोक:** – जो परलोकको उल्टो छ, जसमा दुःख विशेष भोग्नु पर्ने हुन्छ, त्यो 'अपरलोक' भनिन्छ।
१२. **जन्म:** – जसमा शरीरका साथ संयुक्त भएर जीव कर्म गर्नमा समर्थ हुन्छ, त्यसलाई 'जन्म' भनिन्छ।
१३. **मरण:** – जुन शरीर प्राप्त गरेर जीवले क्रिया गर्छ, त्यस शरीर र जीवको कुनै कालमा जुन वियोग हुन्छ, त्यो 'मरण' हो।
१४. **स्वर्ग:** – जुन विशेष सुख र सुखको सामग्री जीवलाई प्राप्त हुन्छ, त्यहि 'स्वर्ग' हो।
१५. **नरक:** – जुन विशेष दुःख र दुःखको सामग्री जीवलाई प्राप्त हुन्छ, त्यहि 'नरक' हो।
१६. **विद्या:** – जसमा ईश्वर देखि पृथिवीपर्य्यन्त पदार्थहरुको सत्य ज्ञान लिएर त्यसबाट यथायोग्य उपकार लिइन्छ, त्यसको नाम 'विद्या' हो।
१७. **अविद्या:** – जुन विद्या देखि विपरीत छ, भ्रम अन्धकार र अज्ञानरूप छ, त्यो 'अविद्या' हो।
१८. **सत्पुरुष:** – जो सत्यप्रिय धर्मात्मा विद्वान् सबको हितकारी र महाशय हुन्छन्, ति 'सत्पुरुष' हुन्।
१९. **सत्सङ्गकुसङ्ग:** – जेगरेर झूट बाट छुटेर सत्यको प्राप्ति हुन्छ, त्यसलाई 'सत्सङ्ग' र जेगरेर जीव पापमा नै फसिरहन्छ, त्यसलाई 'कुसङ्ग' भनिन्छ।

२०. **तीर्थ:** – जति पनि विद्याभ्यास, सुविचार, ईश्वरोपासना, धर्मानुष्ठान, सत्संग, ब्रह्मचर्य, जितेंद्रियतादि उत्तम कर्म छन्, ति सब 'तीर्थ' हुन्। किनकि यी बाट नै जीव दुःखसागर तर्न सक्षम हुन्छ।

२१. **स्तुति:** – जो ईश्वर वा अन्य कुनै पदार्थको गुण ज्ञान, कथन, श्रवण र सत्यभाषण गरिन्छ, त्यो नै 'स्तुति' हो।

२२. **स्तुतिको फल:** – जो गुण ज्ञान आदि गर्नाले गुणवान पदार्थहरुमा प्रीति हुन्छ, त्यो नै 'स्तुतिको फल' हो।

२३. **निन्दा:** – जो मिथ्याज्ञान मित्याभाषण झूटमा आग्रहादि क्रिया छ, जसमा गुण छोडेर त्यसको स्थानमा अपगुण लगाइन्छ, त्यो 'निन्दा' हो।

२४. **प्रार्थना:** – आफ्नो पूर्ण पुरुषार्थको उपरान्त उत्तम कर्मको सिद्धिको लागि परमेश्वर वा अन्य कुनै सामर्थ्यवान मनुष्यको सहायता लिनु नै 'प्रार्थना' हो।

२५. **प्रार्थनाको फल:** – अभिमानको नाश, आत्मामा आर्द्रता, गुण ग्रहणमा पुरुषार्थ, र अत्यन्त प्रीति हुनु यही नै 'प्रार्थनाको फल'हो।

२६. **उपासना:** – ईश्वरको आनन्दस्वरूपमा आत्मालाई मग्न गर्नु नै 'उपासना' हो।

२७. **निर्गुणोपासना:** – शब्द, स्पर्श, रूप, रस, गन्ध, संयोग, वियोग, हल्का, भारी, अविद्या, जन्म, मरण र दुःख आदि गुणहरु बाट रहित परमात्मालाई जानेर उसको उपासना गर्नु 'निर्गुणोपासना' हो।

२८. **सगुणोपासना:** – जसमा सर्वज्ञ, सर्वशक्तिमान्, शुद्ध, नित्य, आनन्द, सर्वव्यापक, एक, सनातन, सर्वकर्ता, सर्वाधार, सर्वस्वामी, सर्वनियन्ता, सर्वान्तर्यामी, मंगलमय, सर्वानन्दप्रद, सर्वपिता, सब जगत्को रचना गर्ने, न्यायकारी, दयालु आदि सत्य गुण युक्त जानेर ईश्वरको उपासना गर्नु 'सगुणोपासना' हो।

२९. **मुक्ति:** – सम्पूर्ण दुष्कर्म र जन्म मरणादि दुःखसागर बाट छूटेर सुखरूप परमेश्वरलाई प्राप्त गर्नु र सुख तथा आनन्दमा रहनु नै 'मुक्ति' हो।

३०. **मुक्तिका साधन:** – जो पूर्वोक्त ईश्वरको स्तुति प्रार्थना र उपासना गर्नु, धर्माचरण र पुण्य गर्नु, सत्संग विश्वास, तीर्थसेवन सत्पुरुषहरुको संगत् र परोपकारादि सब शुभकर्महरु गर्नु तथा सब दुष्कर्महरु बाट अलग रहनु नै 'मुक्तिका साधन' हुन्।

३१. **कर्त्ता**: - जसले स्वतन्त्रता संग काम गर्छ अर्थात् जसको अधीनमा सबै साधनहरु हुन्छन् त्यो 'कर्त्ता' हो।

३२. **कारण**: - जसलाई ग्रहण गरेर कर्ताले कुनै कार्य वा वस्तु बनाउँछ, अर्थात् जसको विना कुनै वस्तु बन्न सक्दैन, त्यो 'कारण' हो,कारण तीन प्रकारका हुन्छन्:

३३. **उपादान कारण: -** जसलाई ग्रहण गरेर नै उत्पन्न हुन्छ वा जसबाट केहि बनाइन्छ, जस्तै माटो बाट घैटो बन्छ, त्यसलाई 'उपादानकारण' भनिन्छ ।

३४. **निमित्तकारण**: - जो कर्ता हो, अर्थात् जसले कुनै वस्तु बनाउँछ जस्तै कुमालले घैटो बनाउँछ, यस्ता प्रकारका पदार्थलाई 'निमित्तकारण' भनिन्छ ।

३५. **साधारण कारण:** – कुनै वस्तु बनाउँदा प्रयोगमा आउन सक्ने सामान्य पदार्थहरु जस्तै घैटो बनाउँदा कुमालेको लठ्ठी, चक्र र दिशा आकाश तथा प्रकाश, यिनलाई 'साधारण कारण' भनिन्छ ।

३६. **कार्य्य:** – जो कुनै पदार्थको संयोगविशेष बाट स्थूल भएर काममा आउँछ, अर्थात् जो गर्न योग्य छ, त्यो त्यस कारणको 'कार्य्य' भनिन्छ।

३७. **सृष्टि:** – जो कर्त्ताको रचनाबाट कारण द्रव्य कुनै संयोगविशेष बाट अनेक प्रकार कार्यरूप भएर वर्तमानमा व्यवहार गर्न योग्य हुन्छ, त्यो 'सृष्टि' हो।

३८. **जाति:** – जो जन्म देखि मरण पर्यन्त बनीरहोस्, जो अनेक व्यक्तिहरुमा एकरूपले प्राप्त होस्, जो ईश्वरकृत अर्थात् मनुष्य, गाई, अश्व र वृक्षादि समूह छन्, ति 'जाति' शब्दार्थ बाट लिइन्छन्।

३९. **मनुष्य:** – अर्थात् जसले विचार नगरी कुनै काम गर्दैन, उसको नाम 'मनुष्य'हो।

४०. **आर्य:** – जो श्रेष्ठस्वभाव, धर्मात्मा, परोपकारी, सत्यविद्यादि गुणयुक्त र आर्य्यावर्त्त देशमा सदा देखि बसेको, तिनलाई 'आर्य्य' भनिन्छ।

४१. **आर्य्यावर्त देश:** – हिमालय, विन्ध्याचल, सिन्धु नदी र ब्रह्मपुत्र नदी यी चार सीमाको बीचमा र जहाँ सम्म यिनको विस्तार छ, तिनको मध्यमा जो-जो देश छन्, तिनको नाम 'आर्य्यावर्त' हो।

४२. **दस्यु:** – अनार्य अर्थात् जो अज्ञानी-मूर्ख, आर्य्यहरुको स्वभाव र निवास देखि पृथक् डाका, चोर हिंस्रक जो दुष्ट मनुष्य छन्, ति 'दस्यु' हुन् ।

४३. **वर्ण:** – जो गुण र कर्मको योग बाट ग्रहण गरिन्छ, त्यो 'वर्ण' हो।

४४. **वर्ण भेद:** – ४ वर्ण जो ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रादि छन् ति 'वर्ण' भनिन्छन्।

४५. **आश्रम:** – जसमा अत्यन्त परिश्रम गरेर उत्तम गुणहरुको ग्रहण र श्रेष्ठ काम गरिन्छन्, तिनलाई 'आश्रम' भनिन्छ।

४६. **आश्रम भेद:** – जो ४ छन्- सद्विद्यादि शुभ गुणहरुको ग्रहण तथा जितेन्द्रियता बाट आत्मा र शरीरको बल बढाउनको लागि- "ब्रह्मचारी", जो सन्तानोत्पत्ति र विद्यादि सब व्यवहारहरु सिद्ध गर्नको लागि- "गृहाश्रम", जो विचारको लागि- "वानप्रस्थ", र जो सर्वोपकार गर्नको लागि- "संन्यासाश्रम" हुन्छ यिनलाई नै 'आश्रम' भनिन्छ।

४७. **यज्ञ:** – जो अग्निहोत्र देखि अश्वमेध पर्य्यन्त, वा जो शिल्प व्यवहार र पदार्थ विज्ञान जो कि जगत्को उपकारको लागि गरिन्छ, त्यो 'यज्ञ' हो।

४८. **कर्म:** – जो मन, इन्द्रिय र शरीरमा जीवले चेष्टा विशेष गर्दछ, त्यो 'कर्म' हो जो शुभ, अशुभ र मिश्रभेदले तीन प्रकारका छन्।

४९. **क्रियमाण कर्मः** – जो वर्तमानमा गरिन्छ, त्यो 'क्रियमाण कर्म' हो।

५०. **सञ्चित** कर्मः– जो क्रियमाणको संस्कार ज्ञानमा जम्मा हुन्छ, त्यो 'सञ्चित कर्म/ संस्कार' हो।

५१. **प्रारब्ध कर्मः** – जो पूर्व गरिएको कर्महरुको सुख दुःख रूप फलको भोग गरिन्छ, त्यो 'प्रारब्ध कर्म' हो।

५२. **अनादि पदार्थः** – जो ईश्वर, जीव र प्रकृति (सब जगत्को कारण) छन् यी तीन 'स्वरूपले अनादि' हुन्।

५३. **प्रवाह देखि अनादि पदार्थः** – जो कार्यजगत्, जीवको कर्म र जो यिनको संयोग-वियोग छ, यी तीन 'परम्परा देखि अनादि' हुन्।

५४. **अनादि स्वरूपः** – जो कहिल्यै उत्पन्न न भएको, जसको कारण कोहि पनि छैन, अर्थात् जो सदा देखि स्वयंसिद्ध छ, त्यो 'अनादि' हो।

५५. **पुरुषार्थः** – अर्थात् सर्वथा आलस्य छोडेर उत्तम व्यवहारहरुको सिद्धिको लागि मन, शरीर, वाणी र धनले अत्यन्त उद्योग गर्नुलाई 'पुरुषार्थ' भनिन्छ।

५६. **पुरुषार्थको भेदः** - जो अप्राप्त वस्तुको इच्छा गर्नु; प्राप्तलाई राम्रोसंग रक्षण गर्नु; रक्षितलाई बढाउनु र बढेको पदार्थलाई सत्यविद्याको उन्नतिमा तथा सबको हित गर्नमा खर्च गर्नु; यी चार प्रकारका कर्महरुलाई 'पुरुषार्थ' भनिन्छ।।

५७. **परोपकारः** – अर्थात् आफ्नो सब सामर्थ्य बाट अन्य प्राणिहरुको सुखको लागि तन, मन, धनले प्रयत्न गर्नुलाई 'परोपकार' भनिन्छ ।

५८. **शिष्टाचारः** – जसमा शुभ गुणहरुको ग्रहण र अशुभ गुणहरुलाई त्याग गरिन्छ, त्यो 'शिष्टाचार' हो।

५९. **सदाचारः** – जो सृष्टि देखि हाल सम्म सत्पुरुषहरुको वेदोक्त आचार चल्दै आएको छ, जसमा सत्यको नै ग्रहण र असत्यको परित्याग गरिएको छ, त्यो 'सदाचार' हो।

६०. **विद्यापुस्तकः** – जो ईश्वरोक्त, सनातन, सत्य विद्यामय चार वेद छन्, यिनै 'विद्यापुस्तक' हुन्।

६१. **आचार्यः** – जसले श्रेष्ठ आचार ग्रहण गराएर सबै विद्याहरु पढाउँछ, त्यसलाई 'आचार्य्य' भनिन्छ।

६२. **गुरुः** – जसले वीर्यदान देखि भोजनादि गराएर पालन गर्छ, त्यस पितालाई 'गुरु' भनिन्छ र जसले आफ्नो सत्योपदेश बाट हृदयको अज्ञानीरूप अन्धकार हटाएर ज्ञान दिन्छ, त्यसलाई पनि 'गुरु' अर्थात् आचार्य्य भनिन्छ।

६३. **अतिथिः** – जसको आउने र जाने कुनै पनि निश्चित तिथि हुँदैन, तथा जो विद्वान् बनेर सर्वत्र भ्रमण गर्दै प्रश्नोत्तरको उपदेश बाट सब जीवहरुको उपकार गर्छ, त्यसलाई 'अतिथि' भन्दछन्।

६४. **पञ्चायतनपूजा:** – जीवित माता, पिता, आचार्य्य, अतिथि र परमेश्वरको यथायोग्य सत्कार गरेर प्रसन्न गर्नु नै 'पञ्चायतन पूजा' हो ।

६५. **पूजा:** – चेतन र ज्ञानादि गुणवानहरुको यथायोग्य सत्कार गर्नु 'पूजा' हो ।

६६. **अपूजा:** – अचेतन र ज्ञानादि रहित जड पदार्थहरुको र जो सत्कारका योग्य छैनन्, तिनको सत्कार गर्नु 'अपूजा' हो।

६७. **जड:** – जो वस्तु ज्ञानादि गुणरहित छन्, ति 'जड़' हुन् ।

६८. **चेतन:** – जो पदार्थ ज्ञानादि गुणयुक्त छन्, ति 'चेतन' हुन्।

६९. **भावना:** – जो वस्तु जस्तो छ, त्यसमा विचार द्वारा त्यस्तै निश्चय गर्नु, जसको विषय भ्रमरहित होस्, अर्थात् जस्तालाई तस्तै मान्नु र सम्झनु 'भावना' हो।

७०. **अभावना:**- जो भावनाको उल्टो होस् अर्थात् जो मिथ्याज्ञान द्वारा जो वस्तु जस्तो छ त्यसमा अर्कै निश्चय गर्नु जस्तै जडमा चेतन र चेतनमा जडको निश्चय गर्नु त्यो 'अभावना' हो।।

७१. **पण्डित:** – जसले सत् असत्लाई विवेक द्वारा जान्दछ, धर्म्मात्मा, सत्यवादी, सत्यप्रिय, विद्वान् र सबको हितकारी छ, त्यो 'पण्डित' हो।

७२. **मूर्ख:** – जो अज्ञान, हठ, दुराग्रहादि दोष सहित छ, त्यो 'मूर्ख' हो ।

७३. **ज्येष्ठकनिष्ठव्यवहार:** – ठूला र साना संग यथायोग्य परस्पर मान्य व्यवहार गर्नु 'ज्येष्ठकनिष्ठव्यवहार' हो ।

७४. **सर्वहित:** – तन, मन र धनले सबको सुख बढाउनुमा उद्योग गर्नु 'सर्वहित' हो।

७५. **चोरीत्याग:** – स्वामीको आज्ञा विना अन्याय पुर्वक कुनै पदार्थ ग्रहण गर्नु 'चोरी' र त्यसलाई छोड्नु 'चोरीत्याग' हो।

७६. **व्यभिचारत्याग:** – कुनै परस्त्रीका साथ गमन गर्नु, र आफ्नी स्त्री संग पनि ऋतुकाल विना वीर्यदान गर्नु तथा वीर्यको अत्यन्त नाश गर्नु र युवावस्था हुनु पुर्व नै विवाह गर्नु यी 'व्यभिचार' हुन्। यसलाई छोड्नु 'व्यभिचारत्याग' हो।

७७. **जीवको स्वरूप**:– जो चेतन, अल्पज्ञ, इच्छा, द्वेष, प्रयत्न, सुख, दुःख र ज्ञान गुण भएको तथा नित्य छ, त्यो 'जीव' हो।

७८. **स्वभाव:** – जुन वस्तुको जस्तो स्वाभाविक गुण छ, जस्तो अग्निमा रूप र दाह, अर्थात् जब सम्म त्यो वस्तु रहन्छ तब सम्म उसको त्यो गुण पनि छुट्दैन त्यसैले यसलाई 'स्वभाव' भन्दछन्।

७९. **प्रलय:** – जो कार्य जगत् छ, त्यसको कारणरूप हुनु, अर्थात् जगत्लाई बनाउनेवाला ईश्वरले जुन-जुन कारणहरुले सृष्टि बनाउँछ, ति अनेक कार्यहरु रचेर यथावत् पालन गरेर पुनः कारणरूप गरेर राख्दछ, त्यसैको नाम 'प्रलय'हो ।

८०. **मायावी:** – जो मनुष्य छल कपट स्वार्थमा प्रसन्नता दम्भ अहङ्कार शठतादि दोषयुक्त होस्, त्यो 'मायावी'हो।

८१. **आप्त:** – जो छलादि दोषरहित, धर्मात्मा, विद्वान् सत्योपदेष्टा, सबमा कृपादृष्टिले वर्त्तमान भएर अविद्यान्धकारको नाश गरेर अज्ञानीहरुको आत्मामा विद्यारूप सूर्यको प्रकाश सदा गरोस्, त्यो 'आप्त' हो।

८२. **परीक्षा:** – जो प्रत्यक्षादि आठ प्रमाण, वेदविद्या, आत्माको शुद्धि, र सृष्टिक्रम अनुकूल विचारले सत्यासत्यको ठीक ठाकले निश्चय गरिन्छ, त्यो 'परीक्षा' हो।

८३. **आठ प्रमाण:** – प्रत्यक्ष, अनुमान, उपमान, शब्द, ऐतिह्य, अर्थापत्ति, सम्भव र अभाव यी 'आठ प्रमाण' हुन्। यिनै द्वारा मनुष्यले सब सत्यासत्यको यथावत् निश्चय गर्न सक्छ।

८४. **लक्षण:** – कुनै वस्तु चिन्ने वा थाहा पाउने विशेष चिन्ह वा गुण, जो उसको स्वाभाविक गुण छ, जस्तो अग्निको स्वाभाविक गुण 'रुप' हो, यसैलाई 'लक्षण' भनिन्छ।

८५. **प्रमेय:** – प्रमाणका निम्ति उपयुक्त ठहरिएको बिषय, कुनै यथार्थ ज्ञानलाई प्रमाणित गर्ने आधार जस्तै आँखाको प्रमेय रूप अर्थ हो, जो इन्द्रियहरु द्वारा प्रतीत हुन्छ, त्यसलाई 'प्रमेय' भनिन्छ।

८६. **प्रत्यक्ष:** – जो प्रसिद्ध शब्दादि पदार्थहरुका साथ श्रोत्रादि इन्द्रिय र मनको निकट सम्बन्ध बाट ज्ञान हुन्छ, त्यसलाई 'प्रत्यक्ष' भनिन्छ।

८७. **अनुमान:** – कुनै पूर्व दृष्ट पदार्थको एक अङ्गलाई प्रत्यक्ष देखे पश्चात् उसको अदृष्ट अङ्गहरुको जसबाट यथावत् ज्ञान हुन्छ, त्यो 'अनुमान' हो।

८८. **उपमान:** – उपमा बाट ज्ञान हुनु जस्तै कसैले कसैसंग भन्यो कि गाई जस्तै निल गाई हुन्छ, यस्तै जो उपमा बाट सदृश ज्ञान हुन्छ, त्यो 'उपमान' हो।

८९. **शब्द:** – जो पूर्ण आप्त परमेश्वर र आप्त मनुष्यको उपदेश छ, त्यहि नै 'शब्द' प्रमाण हो।

९०. **ऐतिह्य:** – जो शब्दप्रमाणको अनुकूल होस्, जो कि असम्भव र असत्य लेख न होस् त्यसैलाई 'ऐतिहय' (इतिहास) भनिन्छ।

९१. **अर्थापत्ति:** – एउटा कुरो भनेपछी अर्को नभनेरै बुझिन्छ भने त्यसलाई 'अर्थापत्ति' भनिन्छ।

९२. **सम्भव:** – जुन कुरो प्रमाण, युक्ति र सृष्टिक्रम युक्त होस्, त्यो 'सम्भव' हो।

९३. **अभाव:** – जस्तै कसैले कसैलाई भन्यो कि पानी लिएर आउ। उसले त्याहाँ हेर्यो पानी देखेन, तर जहां पानी छ त्याहाँ बाट ल्याउनु पर्यो। यस अभाव निमित्त बाट ज्ञान हुन्छ भने यसलाई 'अभाव' भनिन्छ।

९४. **शास्त्र:** – जो सत्य विद्या प्रतिपादन बाट युक्त होस् र जे गरेर मनुष्यहरुलाई सत्य सत्य शिक्षा होस्, त्यसलाई 'शास्त्र' भनिन्छ।

९५. **वेद:** – जो ईश्वरोक्त, सत्य विद्याहरुले युक्त ऋषि संहितादि चार पुस्तक छन्, जसबाट मनुष्यहरुलाई सत्यासत्यको ज्ञान हुन्छ, तिनलाई 'वेद' भनिन्छ।

९६. **पुराण:** – जो प्राचीन ऐतरेय शतपथ ब्राह्मणादि ऋषि मुनि कृत सत्यार्थ पुस्तक छन्, तिनैलाई 'पुराण, इतिहास, कल्प, गाथा र नाराशंसी' भनिन्छ।

९७. **उपवेद:** – जो आयुर्वेद वैद्यकशास्त्र, जो धनुर्वेद शस्त्रशास्त्रविद्या राजधर्म्म, जो गान्धर्ववेद गानशास्त्र, र अर्थवेद जो शिल्पशास्त्र छन्, यी चारलाई 'उपवेद' भनिन्छ।

९८. **वेदांग:** – जो शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द र ज्योतिष् आर्ष सनातन शास्त्र छन्, यिनलाई नै 'वेदांग' भन्दछन्।

९९. **उपांग:** – जो ऋषि मुनिकृत मीमांसा, वैशेषिक, न्याय, योग, सांख्य र वेदान्त छः शास्त्र छन्, यिनलाई 'उपांग' भनिन्छ।

१००. **नमस्ते:** – म तपाईलाई मान गर्दछु।

**वेदरामाङ्कचन्द्रेऽब्दे विक्रमार्कस्य भूपतेः।**
**नभस्ये सतसप्तमयां सौम्ये पूर्तिमगादियम॥**

श्रीयुत् महाराज विक्रमादित्यको संवत-१९३४ मा श्रावण
महीनाको शुक्लपक्ष, सप्तमी तिथि बुधवारका दिन स्वामी दयानन्द
सरस्वती ज्यू ले आर्य्यभाषामा सबै मनुष्यहरुको हितार्थ यो
आर्य्योद्देश्यरत्नमाला पुस्तक प्रकाशित गर्नु भयो॥

==================================================================

......समाप्त.....

==================================================================

++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++++